१९४४ सालको

## सतीप्रथा नियन्त्रण गर्ने १९४४ सालको इस्तिहार

लोग्ने मरेपछि चितामा पत्नीले जिउँदै जल्नु पर्ने अमानुसिक प्रथालाई जंगवहादुरले १९१० सालको मुलुकी ऐनद्वारा निरुत्साहित गर्न विभिन्न वन्देज लगाए । ती बन्देजहरू थिए-

### सति जान्याको

१. कसैका विवाहिता वा भात षाजा चलन्या नचलन्या जात्का कंन्या ल्यायाका स्वास्निले सति जांछौ भन्या १६ वर्ष मनिकालाई जान नदिनु.

२. विहा गर्‍याका र भात षाजा चलन्या नचलन्या जात्का कंन्या ल्यायाका स्वास्निमा १६ वर्ष नाघ्याकाले सति जांछौ भन्या कांछो छोरो १६ वर्ष पुग्याको रहेनछ भन्या सति जान नदिनु.

३. विहा गर्‍याका र भात षाजा चलन्या नचलन्या जात्का कंन्या ल्यायाका १६ वर्ष नाघ्या कि स्वास्निले सति जांछौ भन्या छोरि ५ वर्ष नपुग्याकी रहिछ भन्या सति जान नदीनु.

४. दोश्रो पोइ भयाका वा दोश्रोदेषि बढ्ता पोइ भयाका स्वास्निले सति जांछौ भन्या जान नदिनु.

५. गद्दिनसीद महाराजका रानि श्वर्गे हुदा र. उमराव भारादार रैयत् गैह्रका स्वास्निहरू मर्दा सति जांछौ भन्या चाकर केटि कमारि

गैह्रलाई सति जान दिनु. एस्तालाइ सति जा भनि वचन दिन पोलाउन्या मोष्यलाइ ५०० रूपैया पोलन्या अरू मल्हामिलाइ जनहि २५० रूपैया दंड गर्नु.

६. वालष गर्भमा छंदा लोग्न्या मर्न्या स्वास्निले गर्भ पैदा भयापछि सति जांछौ भन्या सति जान नदिनु.

७. गर्भिणि स्वास्निले गर्भ रह्याको थाहा भया पछि १ मैन्हाको मात्रै गर्भ भया पनि गर्भिणि स्वास्निलाइ सति जान नदिनु.

८. आफ्नु छोरा मर्दा कुम्को सिडुर भनि छोराको सति जान नदिनु. छोराको सति जान हुंछ भनि वचन् दि पोलाउन्या मुडिन्या जात भया अ◌ैन बमोजिम् अंश सर्वस्व गरि दामल गर्नु. अरू जात भया काटि मारि दिनु. जानि जानि पोलन्या मल्हामिहरूलाई अ◌ैन बमोजिम सर्वस्व गरि छाडि दिनु.

आगे चीसापानी गढीका हार्की कारिन्दाके यथोचित उप्रांत कोही छोटा वढा गैह्रका लोग्न्या मरी स्वास्नी सती जान तयार भयो भंन्या अ◌ैनले जान नहुन्यालाई सती वस्नै नदिनु, अ◌ैनले सती जान हुन्यालाई पनि तेसका जहान सती पोल्नु पर्न्या मानिस गाउँका द्वारे थरी मुषीया मीझार चौधरी ज्मीदार भलादमीहरू आफना ठाउँ नजीक अदालत छंज्याल अदालतमा र अदालत नजिक छैन भन्या अरू सर्कारीया जुन अडा नजीक छ तेसै अडामा गै जाहेर गर्नु सो जाहेर गर्नलाई २/३ दिन लाग्ने गाँउ भयो भन्या ढीलो हुने ४/५ दीनसम्म मुर्दा कसरी राषनु भनी तीमीहरू दुनीयाँदारहरूले

भनौला यसमा धर्मसास्त्रले पनि मऱ्याको मुर्दा ५/७ दीँ सम्म राषीकन पनी सती जान हुन्छ भनी लेषीयाको छ कोही पर्देस गयाका वेलामा कोही मऱ्यो भन्या तेस्ताका स्वास्नी सती जाँदा ४/५ दिन सम्म मऱ्याका मुर्दा तेसै राषी सती जाने रीत पनी चली आयाको सवैलाई थाहा छ ३३ सालमा श्री ३ महाराजा जंगबहादुर राणा पथर घाटमा स्वर्गे हुँदा उनका महारानीहरू सती जाँदा पनी नेपालमा (वक्साइ) गया पछि महारानीहरू सती गयाको पनी सारा यस मुलुकका छोटा वडा दुनियाँ सवैले जानेका छौं भन्या पछि भरीसक्य सती जान्यालाई सम्झाई बुझाई थामनु अनेकतरह गरी सम्झाउँदा पनी केही लागेन भंन्या लेषीया बमोजिम सर्कारीया अडामा गै जाहेर गर्नु अडाले पनी ठहराई सती पोल्नु भन्ने जवाफ दिया पछि मात्र सती पोल्नु येती रीत नपुऱ्याई जसले सती पोल्छ तेसले र सो गाउँका द्वारे थरी मुषीया मीझार चौधरी जीमीदारले बुझाउनु पर्ला, हाम्रा तजवीज माफिक ज्याम सम्मको सजाये हुन्या छ भन्या गाँउ गाँउका द्वारे थरी मुषीया मीझार चौधारी जमीदार गैह्लाई उर्दी दी जगा जगामा इस्तीहार टांस्नालाई यहाँबाट छापा भै आउन्या छ सो इस्तीहार थुम प्रगन्ना तप्पा गाउंमा टांसी दिनु, सो इस्तीहार टासीया पछि कसैले सती पोल्नलाई हामीले सम्झाउंदा बुझाउंदा थामन सकेनौं भनी इस्तीहार बमोजिम् अडामा जाहेर गर्न आउँदा आफुले गै भीयाउने ठाउँमा आफै गै र आफु गै नभीयाउने २/३ दीनको बाटो टाढा भया सो सती जाने मानिस अ◌ैनले उमेर पुगे नपुगेको समर्थ वाला छोरा छोरी भया नभयाको अथवा छोरा

छोरी कोही नहुँदा उनका धन सम्पती जगा जमीन अरूले षान पाउन्या हुँदा उल्क्यामा लागी जान लाग्याको हो की यो सवै परिवन्ध वेसरी बुझी तेस गाउँका द्वारे थरी मुषीया मीझार चौधरी जमीदार भलादमी गैह्रका कागज गराई सती जान्यका उमेर पुगी बुढी भयाका उनका समर्थ भयाका छोरा छोरीले सम्झाउँदा पनी नमानी जान तयार भयाका रह्याछन् र अथवा छोरा छोरी कोही नहुंन्या उमेर पुगेका बुढीले कसैले नउलक्याई आफैं जीद्दीले जान आढयाका रह्या छन् भन्या तेस्तालाई तीनका इस्टमीत्र दाज्यू भाई गाउका द्वारे थरी मुषीया मीझार चौधरी जमीदार भलादमीहरूले भरसष सम्झाउंदा बुझाउँदा पनी नमानी सती जान आट्याको तेस अदालतबाट बुझ्दा पक्का ठहराई सती पोल्यो भंन्या सो कुरा अदालत मार्फत जाहेर गरी पठाउनु सो रीत नपुऱ्याई अडामा जाहेर नगरी सती पोल्यो भंन्या सो सती पोलन्या मलामी र तेस गाउँका द्वारे थरी मुषीया मीझार चौधरी जमीदारहरूलाई पक्री नेल ठोकी अदालत मार्फत हाम्रा हजुरमा जाहेर गरी पठाउनु र जवाफ भया बमोजीम् गर्नु सो इस्तीहार बमोजिम् सती जान लाग्दा अडामा जाहेर गर्न आउँदा सो माथी लेषीयाका परीवंध नवुझी सती पोल्न दियाको ठहऱ्यो भंन्या सो अडालाई हाम्रा तजवीजमा ठहऱ्या माफीक ज्यान सम्मको भारी सजाये भै आउला भंन्या मध्येस पहाडका गैह्र अदालत र नयाँ मुलुक अमीनी समेतका नाउँमा चाहीन्या वेहोराको सनद गराई छापाषानामा छापीयाको इस्तीहार ६००० बुझी जुन अदालतलाई जती चाहिन्छ अंजाम् गरी चाहिन्या इस्तीहार समेत

छापी कां गर भन्या वेहोराको ४४ साल सुदी १० रोज ४ मा यस अडाका नाउँमा हुकुम मर्जीका २ छापे पुर्जी गरी वक्स्याकोमा सो वमोजीमको इस्तीहार टांसने कामलाई अदालतका मद्दतले तुरून्त नीभाउन्या र मीलीसीयाका इलाका भरमा मीलीसीया अडावाट सो इस्तीहार टासीन्या भयाकोले सनद वमोजीमको काम तुरून्त हुने यकै अडालाई मात्र भीडा नभै काम चलाउन्या बुझीनाले र मीलीसीया तालुकका इलाका वाहेक अरू अडा गौंडाका इलाका भीत्रका थुम मौजाकोट गाउँमा सो इस्तीहार टाँस्नालाई अदालतलाई अडा गौंडावाट षटाई दियाको मद्दतले तुरून्त काम हुन नसकन्या बुझीनाले सो अडा गौंडा सदर दफदर षानावाट नीकसारी पैसारी गर्न्या हुनाले सो अडा गौंडा इलाका भीत्रमा यती जील्ला थुम मौजा कोट अमाल गाउँ छ भन्या समेत सदर दफदर षानावाट थाहा पाउन्या हुनाले यस अडा गौंडाका इलाका भीत्रका थुम कोट गाउंलाई यती इस्तीहार पठाउनु पर्छ भन्या अंजाम गर्न सकन्या हुनाले अडा गौंडाका अदालतको भन्दा अडा गौंडामा पुरा मद्दत हुनाले मद्दत भयाका गाउंवाट काम गर्दा हुकुम मर्जीका सनद वमोजीमको काम तुरून्तै हुन्या हुनाले मीलीसीयाको इलाका वाहेक पूर्व पश्चीमका अडा गौंडाका नाउंमा सो माथी लेषीयाका वेहोराको सनद गराई छापाषानावाट इस्तीहार थान १८०० तेस अडावाट बुझी ली सो इस्तीहार टाँस्नालाई सो पूर्व पश्चीमका येस अडा गौंडा इलाका भीत्रका जील्ला थुम मौजा कोट अमाल गैह्रमा टांस्ना लगाउनु सो अडा गौंडा इलाका भरका जील्ला थुम मौजा कोट अमाल गैह्र

टांस्न लगाउन यती इस्तीहार चाहीन्छ भनी अंजाम गरी सो इस्तीहार अडा गौंडा इलाका भरका जील्ला थुम मौजा कोट अमाल गैह्रमा सो इस्तीहार नटाँसीयाको ठहर्‍यो भन्या अ◌ैन बमोजीम तीमीले बुझाउनु पर्ला भन्या सदर दफदर षानाका नाउँमा सनद गरी वक्स्या सनद वमोजिमको काम तुरून्त हुंदो हो भन्या लाग्छ मर्जी हुकुम भनी श्री लेफटेन्ट जनरल डम्बर सम्सेर जंग राणा वाहादुर श्री जज नंदराज गुरूघराना पंडीतज्यूले हाम्रा हजुर्मा विन्ति पार्दा जाहेर भयो तसर्थ सो इस्तीहार टाँस्नालाई अदालतका मद्दतले मात्र सनद बमोजीम चाँडो नहुने बुझीनाले अडा गौंडाको मद्दत पुरा हुनाले मीलीसीयाका इलाका वाहेक पूर्व पश्चीमका गौंडा अडा इलाका भीत्रका थुमकोट गाउँमा सो इस्तीहार टाँस्नालाई छापाषानावाट इस्तीहार थां १८०० तेस अडावाट वुझी ली माथी लेषीयाका वेहोराको पूर्व पश्चीमका अडा गौडाका नाउँमा सनद गरी गराई सो सनद इस्तीहार सो अडा गौंडामा पठाई सो अडा गौंडाका इलाका भरका थुम कोट गाउं गैह्रमा सो इस्तीहार टांस्दा र नटाँसीयाको ठहर्‍यो भंन्या अ◌ैन वमोजीम तीमीहरूले वुझाउला भंन्या ४४ साल आषाढ वदी १ रोज २ मा हुकुम मर्जीका २ छापे सनद यस अडामा आया मोतािवक अव उप्रांत कोही छोटा वडा गैह्रका लोग्न्या मरी स्वास्नी सती जान तयार भयो भन्यां अ◌ैनले जान नहुन्यालाई सती वस्नै नदिनु अ◌ैनले सती जान हुन्यालाई पनी तसका जाहान सती पोल्नु पर्न्या मानीस गाउंका द्वारे थरी मुषीया मीझार चौधरी जमीदार भलादमीहरू सवैले भरसष सम्झाई बुझाई थामनु

सती जान नदिनु भरसष गर्दा पनी केही लागेन भंन्या सती पोल्नु पर्न्या मलामी र गाउंका द्वारे थरी मीझार चौधरी जमीदार भलादमीहरूले आफना गाउं नजीक अदालत छंज्याल अदालतमा र अदालत नजीक छैन भन्या अरू सर्कारीया जुन अडा नजीक छन् तेसै अडामा गै जाहेर गर्नु सो जाहेर गर्नालाई २/३ दिन लाग्ने गाउं भयो भन्या ढिलो हुने ४/५ दीन सम्म मुर्दा कसरी राष्नु भनी तीमीहरू दुनीयांदारहरूले भनौला यसमा धर्म सास्त्रका वचनले पनी मर्‍याका मुर्दा ५/७ दीन सम्म राषीकन पनी सती हुंछ भनी लेषीयाको छ कोही पर्देस गयाको वेलामा कोही मर्‍यो भंन्या तेस्ताका स्वास्नी सती जाँदा ४/५ दीन सम्म मर्‍याका मुर्दा तेसै राषी सती जाने रीत पनी चली आयाको सवैलाई थाहा छ ३३ सालमा श्री ३ महाराज जंग वहादुर राणा पथर घाटमा स्वर्गे हुंदा उनका महारानीहरू सती जाँदा पनी नेपालमा श्री ५ सर्कारमा साधदा ४ रात ५ दीन सम्म मर्‍याको लास तेसै राषी जवाफ गया पछि महारानीहरू सती गयाको पनी सारा येस मुलुकका छोटा वडा दुनीयां सवैले जानेका छौ भन्या पछि भरीसक्या सती जान्यालाई सम्झाई बुझाई थामनु अनेक तरह गरी सम्झाउंदा पनी केही लागेन भंन्या लेषीया वमोजिम सर्कारीया अडामा गै जाहेर गर्नु अडाले पनी ठहराई सती पोल्नु भंन्ने जवाफ दिया पछि मात्र सती पोल्नु येती रीत नपुर्‍याई जसले सती पोलछ तेसले र सो गाउंका द्वारे थरी मुषीया मिझार चौधरी जमीदारले बुझाउनु पर्ला हाम्रा तजवीज माफीक ज्यां सम्मको सजाये हुन्याछ भन्या गाउं गाउंका थरी मुषीया मीझारा

चौधरी जमीदार गैह्लाई उर्दी दी तेस गौंडाका इलाका भीत्रका जील्ला थुम मौजामा समेत इस्तीहार टाँस्नालाई यहाँवाट इस्तीहार पठाई दियाको छ सो इस्तीहार टाँसी लेषीयाका उर्दी वमोजीम काम गर्नु सो उर्दी वमोजीम काम नगरी इस्तीहार पनी नटाँसी आलटाल गरी नीच मान्याको ठहऱ्यो भन्या अ◌ैन वमोजीम वुझाउनु पर्ला भन्या नीज चीसापानी गढीका नाउँमा सनद गरी वक्सनु पर्न्या ठहरायूँ भनी सदर दफदर षानाका श्री दक्षीण तर्फका कम्यांडीङ जनरल फत्ते सम्सेर जंग वहादुर मार्फतका सुव्वा शीवप्रसाद उपाध्याय षरीदार जीत वहादुरले हाम्रा हजुरमा विंती पार्दा जाहेर भयो तसर्थ सो ठहराया वमोजिम हामीवाट पनी सदर गरी वक्स्याको छ सो वमोजीम गर्न्या काम गर लेषीया वमोजीम नगरी नीच मान्याको ठहऱ्यो भंन्या अ◌ैन वमोजीम बुझाउनु पर्ला भंन्या रूक्का दस्षत गरी वक्स्यौं ।

इती सम्वत् १९४४ साल मीती आसाढ सुदी १४ रोज २ सुभम् ।

साभारः कानून सम्बन्धी केही ऐतिहासिक अभिलेखहरु

कानून सहप्रकाशन, कानून व्यवसायी क्लब, काठमाडौं

प्रथम संस्करण, २०६३